




# गोसाईकुण्ड

## रसुवा

### संरक्षणमा धर्म, संस्कृति र परम्पराको महत्व

जनवरी २००७



तयार गर्ने : डब्लु डब्लु एफ नेपाल / कमल कुमार साम्पाङ्ग (राई)
तस्विर : डब्लु डब्लु एफ नेपाल / कमल कुमार साम्पाङ्ग (राई) / झमक बहादुर कार्की
सम्पादन : झमक बहादुर कार्की (राष्ट्रिय निकुञ्ज तथा वन्यजन्तु संरक्षण विभाग)
एलिजा स्थापित (डब्लु डब्लु एफ नेपाल)

Disclaimer: This publication is solely based on the perceptions of the local indigenous people and does not necessarily reflect the opinions held by the WWF Nepal.



## राष्ट्रिय प्रतिनिधिको सन्देश

सिमसार पारिस्थितिक प्रणालीको एक महत्वपूर्ण अंग हो । सिमसारले पानीको भण्डारण र स्वच्छीकरण गर्ने, स्थानिय वासिन्दाहरुलाई विभिन्न प्रकारका श्रोत उपलब्ध गराउने, विभिन्न दुर्लभ वन्यजन्तु एवं वनस्पतिलाई वासस्थान प्रदान गर्ने र धार्मिक, सांस्कृतिक, ऐतिहासिक तथा पर्यटकिय स्थलको रुपमा अतुलनिय भूमिका निर्वाह गरेको हुन्छ ।

नेपाल अनेकौं महत्वपूर्ण सिमसारको धनी राष्ट्र भएता पनि अझै यी सिमसारहरुको खोज र महत्वको विश्लेषण हुन बाँकी नै रहेको छ । तराईको कतिपय सिमसारको सर्वेक्षण तथा अनुसन्धान भई दस्तावेजहरु तयार भैसकेको छ, तर पहाडी क्षेत्रमा अवस्थित धेरै जसो सिमसारहरुको अवस्थाबारे हामी अनभिज्ञ छौं । यही जानकारीको कमिलाई परिपूर्ति गर्न डब्लु डब्लु एफ नेपालको स्वच्छ जल सम्पदा कार्यक्रम अग्रसर भएको छ ।

स्वच्छ जल सम्पदा कायक्रमले हाल उच्च हिमाली क्षेत्रमा रहेका सिमसारहरुको विवरण तयार गर्ने क्रम अगाडी बढाएको छ । यसै सन्दर्भमा प्रस्तुत पुस्तिकाले परम्परागत रुपले जीवन यापन गर्दै आएका आदिवासी जनजातीहरुले धार्मिक, ऐतिहासिक र सांस्कृतिक आस्था एवं विश्वासका आधारमा ती क्षेत्रका संरक्षण तथा उपयोग गरेको जिवन्त उदाहरणहरु प्रस्तुत गरेको छ ।

यो अनुसन्धान अगाडी बढाउन प्राविधिक रुपले सहयोग गरिदिनु भएकोमा राष्ट्रिय निकुञ्ज तथा वन्यजन्तु संरक्षण विभाग र आर्थिक सहयोग गरिदिनु भएकोमा डब्लु डब्लु एफ नेदरल्याण्ड्स/डब्लु डब्लु एफ ईन्टरनेशनल र डब्लु डब्लु एफ युके प्रति डब्लु डब्लु एफ नेपाल हार्दिक कृतज्ञता ज्ञापन गर्दछ ।

अन्त्यमा यस किसिमको विवरण संकलन र सो को प्रकाशनबाट अन्य क्षेत्रका सिमसारहरुको संरक्षण, सम्बर्धन र वुद्धिमत्ता उपयोग गर्न सघाउ पुऱ्याउने छ भन्ने मैले अपेक्षा गरेको छु ।

Manandhar

अनिल मानन्धर
राष्ट्रिय प्रतिनिधि
डब्लु डब्लु एफ नेपाल



हिमाली क्षेत्रको जैविक विविधताको संरक्षण गर्ने उद्देश्य अनुरूप स्थापना गरिएको राष्ट्रिय निकुञ्जहरुमध्ये लाङटाङ्ग राष्ट्रिय निकुञ्ज पनि एक हो । पवित्र हिमाली क्षेत्रभित्र पर्ने यो राष्ट्रिय निकुञ्ज उत्तरमा तिब्बतको सिमानासम्म फैलिएको रसुवा जिल्ला, बागमती अञ्चलमा पर्दछ । तामाङ्ग भाषामा 'र' भनेको भेडा, च्याङ्ग्रा र 'सेवा' भनेको राख्ने वा चराउने क्षेत्र (खर्क) भन्ने बुझाउँदो रहेछ । विविध हावापानी, नदी-नाला, पोखरी, कुण्ड, ताल, वनजङ्गल, भेष-भुषा, रहन-सहन, उच्च हिम शिखर, नाङ्गा पहाड र भिर-पाखा भएको रसुवा जिल्ला ३१४ देखि ७,१३४ मीटर उचाईसम्म फैलिएको छ । गणेश, लाङटाङ्ग, लिरूङ, यालापिक, साङ्गजेन खर्क सदावहार हिँउ परिरहने हिम श्रृंखला हुन् भने क्याङ्गजीङ्ग उपत्यका, घोडा-तबेला, गोसाईकुण्ड माङचेत, सोम्दाङ, गान्जला भञ्ज्याङ्ग, मौसमानुसार हिउँ पर्ने क्षेत्रहरू हुन् । मानवबस्ती नजिक रहेका हिमश्रृंखला, भौगोलिक, धार्मिक, सांस्कृतिक र ऐतिहासिक स्थल, क्षेत्र र कुण्डहरू उक्त जिल्लाको विशेषताहरूमध्ये पर्ने केही झलकहरू हुन् । भौगोलिक अवस्थानुसार १५ प्रकारको वन, संभावित ३,००० प्रजातिका फूल फूल्ने वनस्पतिहरु, २५० प्रजातिका चराहरु लगायत हिमाली क्षेत्रमा पाईने हिउँ चितुवा, हाब्रे, कस्तुरी मृग, हिमाली भेंडा तथा ७० भिन्न ग्लेसियरहरू रसुवा जिल्लाको सुन्दर सम्पदाहरू हुन् ।

जनसंख्याको हकमा यहाँ अधिकांश तामाङ्ग आदिवासीहरूको बाहुल्य रहेको पाईन्छ । तथ्याङ्कले १०० मा ४६ प्रतिशत भन्दा बढी तामाङ्गहरूको प्रतिनिधित्व भएको देखाउँछ । तामाङ्ग बाहेक ब्राह्मण, क्षेत्री, गुरूङ्ग, नेवार, दनुवार, राई, दलित, शेर्पा आदि जाति जनजातिहरू एक आपसमा सहिष्णुताका साथ परापूर्वकालदेखि बसी आएका छन् । रसुवा जिल्ला बासीको प्राय : जसो कृषि पेशामा आधारित सामाजिक आर्थिक अवस्था छ ।

## सीमसार क्षेत्रहरू

त्रिशुली, भोटेकोशी जस्ता ठूला नदीहरूको धनी रसुवा जिल्लामा अनगिन्ति हिमक्षेत्रहरूबाट उत्पत्ती भएर बग्ने साना ठूला खोल्सा खोल्सी, ताल तलैया र कुण्ड आदि निर्मल पानीको अति महत्वपूर्ण स्रोतहरू छन् । निकुञ्ज भित्र शास्त्रमा उल्लेख भएका १०८ हिमकुण्डहरू मध्यका कम्तिमा २६ वटाको गोसाईकुण्ड क्षेत्रमा तथ्याङ्क पाईन्छ । गोसाईकुण्ड, भैरबकुण्ड, सरस्वती, पार्वती, सूर्यकुण्ड, नौकुण्ड र तातो पानी जस्ता कुण्डहरू सीमसारभित्र पर्ने सम्पदाहरू हुन् । त्यस्तै लाङटाङ्ग परिसरमा पर्ने अन्य कुण्डहरूको अवस्थाबारे सामुहिक छलफलदद्वारा जनसमुदायले प्रत्यक्ष देखेको आधारमा थाहा भएको थियो । चित्र नं. १ मा अंकित कुण्डहरू क्रमशः च्याहताङ्ग, साङतो, पातीवारी पाङ्ग, पारीवारी लेक, गुपचेबेम्चे लेक, धातालेक, घ्यूउमालेक, दुघकुण्ड, राकातकुण्ड, नौकुण्डा (राकात कुण्ड आजभोली पानी सुकेको अवस्थामा रहेको) पातीबारी पाङ्, धातालेक र घ्यूउमालेक' (शेर्पा भाषामा आन्द्रा भूँडी आकारमा रहेको कुण्ड) र चित्र नं २ मा गोसाईकुण्ड नजिकै रहेको आमाकुण्ड, त्रिशुल धारा नजिकै रहेको सुक्न लागेको कुण्ड, नागकुण्ड, गणेश कुण्ड, ब्रजाकुण्ड, ईन्द्रेणी कुण्ड, सुकिसकेको कुण्ड, धाम (सूर्यकुण्ड), चन्द्रमा कुण्ड, बाबु, छोरा र छोरी कुण्ड भनी सामुहिक छलफलद्वारा अंकित गरिएको हो । उक्त १०८ कुण्डहरूमध्ये गोसाईकुण्ड धार्मिक र सांस्कृतिक रूपले अतुलनीय र महत्वपूर्ण भएको तथ्य प्रत्येक वर्ष ऋृषि तर्पनी र दशहरा स्नानको समयमा आउनुहुने भक्तजन र धर्मावलम्बीहरूले पुष्टि गरेको पाईन्छ । विशेष गरी हिन्दु समाजमा गोसाईकुण्ड र त्रिशुल धाराको धार्मिक महत्व ज्यादा वर्णन गरिएको पाइन्छ । त्यस परिसरमा भएका अन्य कुण्डहरूको पनि त्यहाँ भएका धामी, झाँक्री, भाषाभाषीहरूले आफ्नो समाजमा महत्व भएको बताउनु भयो ।



४,३८० मीटर अथवा १४,६०० फिट उचाईमा रहेका गोसाईकुण्ड स्याब्रु गा.वि.स. रसुवा जिल्ला, लाङटाङ्ग राष्ट्रिय निकुञ्ज भित्र पर्दछ । उक्त राष्ट्रिय निकुञ्ज भित्र गरिएको सामुदायिक अध्ययन छलफल मार्फत गोसाईकुण्डमा आउने दर्शनार्थीहरूको धार्मिक सांस्कृतिक बाटोको बारेमा प्रश्न राख्दा समुहका सहभागीहरु भन्नुहुन्छ -

> **"जिल्लाका दक्षिणी भाग, नुवाकोट, काठमाडौं र बाहिरी विभिन्न क्षेत्रबाट आउने यात्रुहरू धुन्चे हुँदै, सिङ्गगुम्बा र जिल्लाको पश्चिम उत्तरबाट आउने झाँक्री धामीहरू सिङ्गगुम्बा भएर गोसाईकुण्ड आईपुग्दछन् । यसै गरी गोसाईकुण्डको दर्शन गर्न जाने चलन छ ।"**

उपरोक्त छलफलमा समुदायमा ऐतिहासिक सत्य तथ्यहरू बताउनु सक्नु हुने धामी झाँक्री र बुढापाकाहरु बारे जिज्ञाशा राख्दा सहभागीहरूले दावा तामाङ्ग र सापासिङ्गको नाउँ दिनु भयो । त्यसैगरी सहभागीहरूले छलफल गर्दै गोसाईकुण्ड क्षेत्रमा पुजा गर्ने ठाउँ, नुहाउने र ऐतिहासिक स्थलहरू पनि नक्सामा रेखाङ्कन गर्नु भयो । बिभिन्न समुदायको गोसाईकुण्डसंग नजिकको आस्था रहेको विश्वासबारे जिज्ञासा राख्दा उहाँहरूले सामुहिक छलफलद्वारा



1 LAORI BINA
4 LAORI CHHADAUNE DHAU
5 BUDDHIST TEMPLE
6 GANESH BUNGA (GOD)
7 GANESHKO TAOKO
(HEAD OF THE GOD "GANESH")
GARNALUNG "TAMANG"
8 GOSAIKUNDA "KARPUCHHORAR"
9 BHAIRAB KUNDA "CHONA"
10 SARSATI KUNDA "BAYANGBACHHI"
11 NAG KUNDA
12 AMA KUNDA "BOMOKH DHESH"
13 BIVA TAMPLE
14 TRISUL DHARA "GANGA"
15 KUNDA
16 GANESH KUNDA
17 BRAJA KUNDA
18 SURIYA KUNDA
19 INDRENI KUNDA
20 KUNDA WITHOUT WATER
21 GHAM "SUN" KUNDA
22 AMA "MOTHER" KUNDA
23 CHANDRAMA "MOON" KUNDA
24 BABO "FATHER" KUNDA
25 CHHORA "SON" KUNDA
26 CHHORI "DAUGHTER" KUNDA


चित्र नं. १

चार्ट तयार पार्नुं भयो जस्मा १२% तामाङ्ग, २१% ब्राह्मण, १५% क्षेत्री, १४% नेवार, १२% दलित, ११% शेर्पा र ५% अन्यको गोसाईकुण्डसंग अन्योन्याश्रित सम्बन्ध रहेको देखियो। विभिन्न जनजातिहरूको गोसाईकुण्डसँग धार्मिक, सांस्कृतिक निकटता देखाउने छलफलमा स्थानिय स्तरका बुद्धिजिवी, समाजसेवी, होटल व्यjसायी, शिक्षक र धामी-झाँक्री सहभागी हुनुहुन्थ्यो।




चित्र नं. २

## ऐतिहासिक कथन, धार्मिक तथा सांस्कृतिक मान्यता







पौराणिक युगमा भगवान शिवले "कालकुट" नामको विष सेवन गरेपछि विषको "डाह" लाई शान्त पार्न पानीको खोजीमा जाँदै गर्दा आफ्नो त्रिशुलले हिमाली पवर्तमा प्रहार गर्दा निर्मल जलको सृष्टि भएछ। उक्त निर्मल जल पान गर्दै जाँदा बडेमानको गोसाईकुण्ड तयार हुन पुगेको रहेछ। शिवजी उक्त जलमा सुतिरहनुभएको दर्शन गर्न भक्तजनहरु हजारौंको संख्यामा वर्षको दुईपल्ट गोसाईकुण्ड आउने प्रचलन रहेको पाईयो। विशेष गरी हिन्दु सम्प्रदायमा यसै परम्परालाई मध्यनजर राखी गोसाईकुण्डमा नुहाउने, आफुले लगेको नरिवलको डल्लो कुण्डमा फाल्ने, पातले बनेको दुनामा तेलको बत्ती बाल्ने र कुण्डलाई अग्नी तर्पण गरी शिव मोक्ष होस्, पाप भए मुक्ती पाउँ, स्वर्गमा राम्रो बास पाउँ जस्ता जप गरी आ-आफ्नो इच्छाएको कुरा पुरा हुने मनोकांक्षा लिदैं फर्कने परम्परा रहेछ।

धार्मिक विश्वासका साथ आएका भक्तालुहरू नुहाई कुण्डलाई अग्नी अर्पण गरी स्वास्थ्यलाभ, धनलाभ, जनलाभ र भगवान् शिवको शैयास्थान गोसाईकुण्डको लामो आयु बारे कामना गर्दै फर्कने गर्दा रहेछन्। ८०-९० बर्षका बुढाबुढी देखि युवा सम्म, हिड्न सक्नेदेखि अशक्त भक्तालुहरू सम्म सबै आ-आफ्ना ईच्छा, चाहना, पीर-मर्का, दुःख, बेदना पोख्न भगवान्को प्रतिक गोसाईकुण्डमा आई शिवको दर्शन गरी शिशीमा जल लिएर फर्कने परम्पराले जनसमुदायको गोसाईकुण्डसंग रहेको अटुट धार्मिक र सांस्कृतिक घनिष्टतालाई प्रष्ट पार्दछ।

**"धार्मिक, सांस्कृतिक रितीरिवाज अनुसार शेर्पा समुदायमा गर्भवती महिला र रजश्वला भएको समयमा गोसाईकुण्डको दर्शन गर्न जानु हुन्न भन्ने मान्यता रहेको छ । गर्भवती भएको बेलामा दर्शन गर्न गयो भने उक्त महिलाबाट जन्मने नानीहरू कि त जन्मिदैं अपाङ्ग, लाटो, लुला, या त पछि गएर अपाङ्ग हुने हुन्छ । रजश्वला भएको समयमा छोरी मान्छेहरू गोसाईकुण्ड गएमा मुसलधारे पानी पर्ने, हुरी बतास आउने र असिना पर्ने गई वातावरण असन्तुलित हुने जस्ता लक्षण देखा पर्दछ।"**

**- (सहभागी फिन्जु लामा)**







## घटना अध्ययन: प्रथम

भार्कु रसुवा बस्ने बर्ष ६५ का श्री दावा तामाङ्ग लाङटाङ्ग राष्ट्रिय निकुञ्ज भित्र आफ्नो चौरी गोठ राख्नु हुन्छ। ऐतिहासिक कथनको लागि छानिएका दावा तामाङ्ग आफ्नो समाजमा परम्परागत धामी झाँक्री उपचारको काम पनि गर्नु हुँदोरहेछ। गोसाईकुण्डको बारेमा ऐतिहासिक दन्त्य कथा उहाँ यसरी सुनाउनुहुन्छ -

**"हाम्रा बाबु बाजेहरूले भन्नुभए अनुसार हाम्रो गाउँ भार्कुमा दक्षिणतिर बाट दुई दिदीबहिनी आई ध्यनाडंपा पोखरीको रूप धारण गरी बसेको थियो रे । पोखरीमा गएर चिताएको कुरा पुग्दथ्यो रे त्यसो हुँदा गाउँलेहरूले उक्त पोखरीको पूजाआजा गर्ने चलन बसाएछन् । उक्त पोखरीको आवरण भार्कु गाउँमा अझै छ र पोखरी सामाजिक दायित्व, प्रकृतिसंगको प्रेम, सहिष्णुता र प्रादुर्भावस्थलको प्रतिक मानिएको छ । धेरै वर्षको अन्तराल पश्चात गाउँलेहरूको चाप उक्त पोखरीमा बढदै जाँदा र गाउँलेहरूले पालेको पशुपंछीहरू पोखरीमा नै पस्ने क्रम हुन थालेपछि उक्त दिदीबहिनी पोखरी छाडी सीपिङ घ्यू पोखरीको रूपमा स्थापित भएछन् । गाउँलेहरूले सीपिङघ्यू पोखरीको रूपमा दिदीबहिनी सरेको कुरा थाहा पाएपछि फेरि पूजाआजा गर्न र पशुहरू पनि लिएर आउने गर्न थालेछन् । गाउँलेहरूको घनिष्ट व्यबहार र उनीहरूको पशुपंछीहरूदेखि टाढा कसरी बस्ने भन्ने बिषयमा छलफल गर्दा दिदी चांही अनौठो, एकान्त र मानिसहरूले थाहा नपाउने क्षेत्रको खोजीमा जाने र बहिनीलाई पछि खबर गर्ने या लिन आउने भन्ने बाचा गरी हिंडिछ । धेरै दिनको हिडाईपछि दिदी चांही भैरबकुण्डको रूप लिएर अनौठो, एकान्त र मानिस पुग्न नसक्ने ठाउँमा बहिनीलाइ खबर नगरी बसिछन् । धेरै पर्खाईपछि चिन्ताले ग्रस्त भएकी बहिनी आफ्नी दिदीको खोजीमा त्यतैको बाटो लागिछ । यस्तो घटना भार्कुबासीले चाल पाएपछि उनीहरूपनि पछि पछि आउन थालेछन् । अगाडि जाँदा दिदी भैरबकुण्ड भएर बसीसकेको देखेपछि आफ्नो बचन पुरा नगरी आफु मात्रै बसेकोमा रिसले चुर भई बहिनीले आजको दिनदेखि कुनैपनि मानिसले तपाईको दर्शन गर्न आउने छैन, म कहाँ मात्रै भक्तजनहरू मेरो दर्शन गर्न आउने छन् र मबाट बगेर आएको फोहरमैला तपाईको मुखमा पर्नेछ भनी श्राप दिई आफू गोसाईकुण्डको रूप धारण गरेर बसिछ । यो कुरा सुनेपछि दिदी भैरबकुण्ड अँध्यारो अनुहार बनाई कालो भयो रे । त्यो घटनापछि बहिनी गोसाईकुण्डको मात्र पुजा गर्ने, दर्शन गर्न आउने चलन बसेको छ । आजसम्म पनि हामी भार्कुबासीहरू मंसिर महिनामा पुर्ख्यौली थलो ध्यनाडंपामा पूजाआजा गर्ने प्रचलन छ । ४०-४५ वर्ष अगाडिसम्म गोसाईकुण्डमा भाले बासेको आवाज सुनिन्थ्यो तर आजभोली सुनिन छाडेको छ । नाम्सुङ र सीपिङ्गघ्यू लाङटाङ्ग अहिले सम्म पनि राष्ट्रिय निकुञ्ज भित्र रहेको छ । तामाङ्ग झाँक्री धामीको भाषामा यी ठाउँहरूको नाम लिई परम्परामा भई आएको कथनहरूको पुकार गर्नु पर्ने हुन्छ ।"**

यसरी तामाङ्ग जातिहरूको मौलिक परम्परा, धार्मिक मान्यता, बौद्धमार्गीभन्दा पुरानो भन्ने देखिन्छ ।

**"तामाङ्ग भाषामा भैरबकुण्डलाई "छोना" अर्थात अँध्यारो अनुहार भएको कुण्ड भनिएको ऐतिहासिक तथ्य उनीहरूको समुदायमा रहेछ ।"**

यसरी आफ्नो पुर्खा, चालचलन, परम्परासंग गहिरो ऐतिहासिक सम्बन्ध गोसाईकुण्ड, भैरबकुण्डसंग प्रत्यक्ष रहेको दावा तामाङ्ग बताउनु हुन्छ ।



## घटना अध्यनः दोश्रो

गोसाईकुण्डमा वर्षको दुईपल्ट अर्थात ऋषितर्पणी-जनैपूर्णिमा र दशहरा स्नानमा धार्मिक-सांस्कृतिक मेला लाग्ने गर्दछ । हिन्दु धर्मावलम्बीहरू बिहानै गोसाईकुण्डमा स्नान गरी रूद्री पाठ गर्दै गोसाईकुण्डको पूजा आराधना गर्दा रहेछन् । यसबारे जिज्ञासा राख्दा पण्डितज्यू भन्नु हुन्छ

> **"यसरी रूद्री पाठ गर्दा सांसारिक सुख शान्ति फैलिन, प्राणी जगतको लागि सुखद् वातावरणको सृजना हुन र रोग मुक्त मानव समाज रहनमा सहयोग हुन्छ भन्ने धार्मिक विश्वास छ ।"**

धर्म प्राप्ती, स्वास्थ्य प्राप्ती, शान्ति र पापमुक्तीका लागि गोसाईकुण्डमा डुबुल्की लगाउने जनविश्वासले मानव संस्कारको प्रकृतिसंगको गहिरो सम्बन्ध देखाउँछ । आ-आफ्नो गक्ष, धार्मिक विश्वास र परम्परा अनुसार गोसाईकुण्डको पूजा गर्दै मोक्ष प्राप्ती होस्, घरपरिवारमा सुमधुर सम्बन्ध र वातावरणको श्रृजना होस्, सोचेको, गर्न लागेको योजना सफल होस्, पशु र खेती बाली राम्रो होस् भन्ने ईच्छा व्यक्त गरि भगवानको शुभमंगलको कामना गर्दै कुण्डको पानी शिरमा राखी फर्कने सामाजिक परम्परा अनुपम रहेको पाईन्छ ।

## घटना अध्यनः तृतिय



बौद्ध धर्मको संस्कारभन्दा पहिलाको प्राकृतिक स्वरूप, धार्मिक परम्परा र रितीरिवाज तामाङ्ग समाजमा अझै संरक्षित अवस्थामा रहेछ भन्ने तथ्य गतलाङ्गगे गाउँबाट लगिएको ४०-४५ जनाका धामी झाँक्री समूहले प्रष्ट पारेका थिए । जनैपूर्णिमाको अघिल्लो दिन गोसाईकुण्ड पुग्ने गरी सबैजना ६-७ दिनको समयको बन्दोबस्त गरेर हिंड्नु पर्ने हुंदो रहेछ । यस अध्ययनकै लागि धेरै प्रयास पश्चात उहाँहरूको धार्मिक तथा सांस्कृतिक समुहलाई समेट्ने लक्ष्य अनुरूप अनुरोध गरिएको थियो ।

रसुवा, हाकु बेसी-३ निवासी श्री सपासीङ्ग लोप्चन तामाङ्ग , वर्ष ३२ को धामी, झाँक्री हुनुहुन्छ । बौद्ध धर्मावलम्बी भनिएपनि वहाँहरूको समाजमा आफ्नो पुर्ख्यौलीको प्रकृतिसंग रहेको सम्बन्ध र धर्म परम्परा शैली आजसम्म संरक्षित रहेछ । डाँफे चराको पुच्छरमा हुने प्वाँख र अन्य चराहरूको प्वाँखले सजाइएको धार्मिक टोपी, फेटा र पैरन लगाउनु भएको धामी

सपासीङ्ग लोप्चन आफ्नो चलनबारे यस्तो भन्नुहुन्छ

**हाम्रो बाबु बाजेले गरिआएका पुरानो धार्मिक परम्परा, सांस्कृतिक रितिरिवाज हो । हावा, पानी, ढुङ्गा, जमिन, रूख, प्राणी, खोलानाला, बतास, पोखरी, कुण्डसंग कुरा गर्न सक्ने धामी झाँक्रीको प्रचलन हो । गोसाईकुण्ड जाने दिन सर्वप्रथम घरका कुल देवीदेवता, पितृलाई सम्झाई बुझाई, बल बरदान माग्नु पर्दछ । साथ साथै घरमा अन्नपानीको देवतालाई सम्झाई साथ लैजानको लागि अनुरोध साथ घरबाट निकाल्नु पर्छ । दुम्सीको वाण, चरा आदिको प्वाँख, त्रिशूल, ढुङ्गा, नयाँ अन्नबाली जस्तै मकै, गहुँ, फापर, कोदो, अण्डा एउटा निगालो वा बाँसको चोयाले बुनेको डालोमा राखी ढुकुटीको देवीदेवतालाई आँगनमा राखी कलशमा भरिएको जल सहित पूजा गर्ने र धामीले उक्त देवतालाई बिस्तान्त गर्नु पर्ने हुन्छ । हामी ढेग्रों गजाले बजाउँदै घरका कुल देवता, भकारी देवता लगायत बाहिरिया देबी देवताको पुकार गर्दै सम्झाउँदै घरमा बस्ने, हामीसंग जाने सबैजनालाई रक्षा गर्नु भनी बल बरदान माग्ने गर्छौं त्यसपछि सबै ढोले, महिला, केटाकेटी, बुढापाका एक आपसमा कम्मर पछाडीबाट हात बाँधिएर सै बोम्बो सै-सै याहोले बोम्बो सै-सै-सेक-सेक भन्दै पंक्तिबद्ध रूपमा धार्मिक, सांस्कृतिक यात्रा गोसाईकुण्डको लागि शुरूवात हुन्छ । हामी यसलाई स्याप्ट नाच भन्छौ र से-से बोम्बो भनेको धामीको लागि देवीदेवतासंग बल, शक्ति मागिएको रे । सेक-सेक भनेको चांही हामी सबैजना जोडसंग नाचौं भनेको रे । हामीले प्रत्येक ठाउँमा (डाँडा, खोला, पहरा, खोल्सा, जङ्गल आदि) रहेका स्थानीय देवदेवी, दैवी शक्तिहरूलाई मान, सम्मान गर्दै जानु पर्छ । रात परेपछि बाटोमा रहेको पसल अस्थायी होटल अथवा धर्मशालामा बास बस्नु पर्ने हुन्छ र यस्तो ठाउँमा आईपुगेपछि हामी धामीले वरिपरीको देव, देवी, देवता, अन्य दैबी शक्तिहरूलाई सम्झाई बुझाई मान मनितो गरी हाम्रो लागी उक्त रातको बास दिनु भन्नु पर्छ । त्यसरी नै हाम्रो घरको कुल देवता, अन्य भण्डारमा रहने देवतालाई हामी यस ठाउँमा आईपुग्यौं, आज हामी यस ठाउँमा बास बस्ने छौ भनी बेली बिस्तार लगाउनु पर्छ नत्र भने उहाँहरु रिसाउनु हुन्छ ।**











यस्तो सम्मान, विश्वासमा आधारित अलौकिक शक्ति सम्पन्न समाजको प्रकृतिसंग गहिरो सम्बन्ध रहेको र बिना प्रकृति र संस्कार जीवन अधुरो भएको प्रष्ट देखिन्छ। बास बस्ने ठाउँको सफा एक कुनामा घरबाट ल्याएको देवतालाई ढोलेले राखेपछि धामीले ढेग्रों बजाउँदै पूजा गर्नु हुँदो रहेछ। बाटो बीचमा राखिएको स्थायी होटल व्यबसायीहरूले वहाँहरूलाई रक्सी बाटोमा राखी स्वागत गर्ने चलन पनि रहेछ। धामीले देवताहरूलाई यसबारेमा वर्णन गरेपछि सगुनको रूपमा लिंदै सबैजना नाच्दै अगाडि बढ्ने सामाजिक चलन रहेछ। प्राकृतिक रूपमा उच्च










रहेको भाग, ढुङ्गा, रूख, बिरुवा आदि भएको ठाउँमा आएर बसेको हुनाले वहाँहरूको सम्मानमा वहाँहरूले हाम्रो निमित्त भनी छाडी दिएको अन्नपात, अण्डा अझसम्म छ भनी देखाउँदै जानु पर्ने कुरा धामी सपासीङ्ग बताउनु हुन्छ। सहभागीहरूको उक्त कथनद्वारा शिक्षा बोध भयो कि समाजमा पुर्खाहरूको सम्मानको लगि कृषि, जैविक विविधता र प्रकृतिको सुरक्षा गर्ने परम्परागत शैली गहन रहेछ।

सबैजना नाच्दै गाउँदै जाने क्रममा धामी सपासीङ्ग बाटो वरिपरी रहेको ढुङ्गा, मन्दिर आदिको पूजाआजा गर्दै जाँदा रहेछन्। बादलले छोपिएको पोखरी माथिको ढुङ्गामा पुगेर उक्त धार्मिक यात्रा अडियो। त्यो पोखरी भैरबकुण्ड रहेछ। त्यहाँ पुगेपछि एकजना ढोलेले घरबाट ल्याइएको डालोबाट एउटा अण्डा झिकी उक्त ठूलो ढुङ्गामा अडकाई राखिएको बाँसमा बुनेको डोकोमा राखी, धामीले आफनो धार्मिक बोलिले पूजा गर्दा रहेछन्।









"धामी, झाँक्रीहरूसंग वरिपरी रहेको देव, देवता, भूतप्रेत आउने गर्दछ र उहाँहरूले त्यस्ता देबी देवताहरूलाई सम्झाई बुझाई सम्मान गर्दै जानु पर्छ ।"

**यस बारेमा धामी सपासीङ्ग भन्नु हुन्छ –**

"हामी पहिला भैरबकुण्डलाई अण्डा चढाएर, नयाँ अन्नपात, बल–बरदान माग्छौं, यो हाम्रो बाबु बाजेदेखि गरिआएको चलन हो र यसलाई मान्नु पर्छ । त्यसपछि सबैजना नाच्दै गाउँदै गोसाईकुण्ड हुँदै धर्मस्थलमा बास बस्न पुग्छन् । ढोलेले घरबाट ल्याएको देवतालाई एक ठाउँमा राखेपछि धामीले गोसाईकुण्ड परिशरमा भएका सम्पूर्ण देव देवी, देवता, हिमालचुलीमा बस्ने दैबीशक्ति सबैको नाम लिई एक रातको बासको लागि अनुरोध गर्नु पर्छ । जनैपूर्णिमाका दिन सबेरै सबैजनाको तयारी पश्चात बसेको ठाउँमा धामीले पूजाआजा गर्नु पर्ने हुन्छ । आफ्नो धार्मिक भाषामा धामीले देव–देवी, देवताहरूसंग कुरा गर्दै घरको देवता बोक्ने ढोले अघि राखी धामी र अरु गाउने र नाच्ने सबैजना सै–सै बोम्बो– सै–सै, सेक–सेक भन्दै त्रिशुलधारा तर्फ जानको लागि तयार हुन्छन् । त्रिशुलधारालाई आस्थाको प्रतिक मान्दै, हाम्रो पुर्खाहरुको हंश यस ठाउँमा भएको हुनाले वहाँहरूलाई पुकार गर्नु पर्दछ । यो अवस्थामा हाम्रो खेतीपाती, पशुपंछी पाल्नको लागि राम्रो मौसमको लागि घरबाट ल्याइएको जल छर्कदै अन्नहरू देखाउने प्रचलन छ ।"



**"हाम्रो धर्ममा यो क्षेत्र अति महत्वपूर्ण छ किनकि हाम्रो पुर्खाहरूको सातो हावा भएर यस ठाउँमा लुकेर बसेको हुन्छ । गाउँलेहरूको आयु यस ठाउँमा बसेका उक्त पुर्खाहरूको साथ आयो भने उनीहरू बिरामी पर्ने हुन्छ । उक्त आयु माग्न यस क्षेत्रमा आउनु पर्छ । हामी हाम्रो पुर्खाहरूले हाम्रो लागि भनी दुःख सास्ती गरी छाडी दिएको खेतीपाती, अन्नवाली, कुखुराको फुल, घ्यू, अझसम्म संरक्षण गरी राखेका छौं भनि देखाउन र आउने बालीको लागि चाहिने राम्रो मौसम हामीलाई गाउँघरमा पठाई दिन भनि यस क्षेत्रमा आउने गर्दछौं ।"**







त्यसपछि माथिल्लो भागमा पुजारीहरू पुगेर पूजाआजा गर्ने तामाङ्ग परम्परा रहेछ र त्यसपछि सबैजना त्रिशुलधारा भन्दा माथिल्लो पहाड चट्टानको काखमा अवस्थित कुण्डमा जाने रहेछ। उक्त क्षेत्रमा पुग्नासाथ धामी झाँक्रीहरूले घरबाट ल्याइएको अन्न पानीलाई देखाउँदै सम्पूर्ण देबदेबी, देवताहरूको पुकार गर्दै आफ्नो कुराहरू फलाक्नु हुँदा रहेछ। एक ढोलेले डालोबाट कुखुराको अण्डा लिएर पोखरीको एक कुनामा बाँसको लिंगोमा गाड्दा सेतो लुगा भगवानको नाममा चढाउँदै अण्डालाई ढुङ्गामा चढाउने परम्परा रहेछ।

एवंम प्रकारले धामी सपासीङ्गले आफ्नो समुदायका सदस्यहरूको स्वास्थ्य उपचार पनि त्यसै ठाउँमा गर्नु हुँदो रहेछ। गाउँलेहरूले सानो नानीहरूलाई पनि उपचारको लागि त्यहाँ लिएर जाने प्रचलन रहेछ। पूजाआजा सकिएपछि ढोलेले प्रसादको रूपमा सबैजनालाई पानी दिनु पर्ने र सबैले आ-आफ्नो चाहना, स्वास्थ्य, खेतीपाती, पशुपंछी, घर परिवार राम्रो हुने विश्वासका साथ जलग्रहण गर्नु पर्ने चलन रहेको सहभागी सदस्यले बताउनु भयो। धेरै समयको लगातार पूजा पछि अर्को वर्ष पनि आउने बचन का साथ हामी अर्को साल यसरी नै तपाईहरूको क्षेत्रमा आउने छौं, हाम्रो रक्षा गर्नुहोस्,

कुनै भूल, गल्ती भए क्षमा गरिदिनु होस्, हामीलाई आयु, वरदान दिनुहोस्, तपाईहरू सबैलाई यस ठाउँमा राम्रो वातावरण होस् भन्दै विदा हुने उहाँहरूको परम्परा रहेछ ।



जैविक विविधता संरक्षण सन्दर्भमा राष्ट्रिय निकुञ्ज भित्र चौंरी पालकहरू पनि चासो राख्दा रहेछन् । आफ्ना पशुहरू राम्रो होस् भन्दै वहाँहरु गोसाईकुण्डको प्रार्थना गर्नु हुदो रहेछ । खान हुने जङ्गली च्याउ, औषधी मूलो हुने जडिबुटी, जङ्गली सुन्दरफूल लगायत हिउँ चितुवा, हाब्रे, हिमाली खरायो (Pika), पानी हाँस, हिमाली भेंडा आदि पवित्र हिमाली पर्वत सिमसार पारिस्थितीकिय प्रणालीसंग अन्योन्याश्रित सम्बन्ध भएका जैविक विविधताहरू हुन् । मौसम अनुसार सुन्दर प्रकृतिको गहनाको रूपमा झपक्क फूलिरहेको वनस्पतिका प्रजातिहरू उक्त निकुञ्जले संरक्षणमा पुऱ्याएको देन हो । त्यस्ता कति वनस्पति प्रजातिहरू औषधीको रूपमा महत्व हुन्छन् त कति धार्मिक रूपले सम्मानित हुन्छन् । गाउँघरमा बसोबास गरि आएका समुदायहरूमा कुन विरूवा के को लागि महत्वपूर्ण छ भनी ज्ञान रहेको पाईन्छ ।







गाउँघरका परम्परा, समुदायमा चलिआएका धार्मिक रितिरिवाज र पुर्ख्यौलीहरूले प्रयोगमा ल्याएका जैविक विविधता संरक्षण गरी राख्नु पदर्छ भन्ने सांस्कृतिक विश्वास प्रकृति संरक्षणमा अनुपम देखिन्छ । परम्परा देखि चलिआएको यहि जनजातिय प्रचलनहरु नै हाम्रा सिमसार क्षेत्रहरुको सर्म्बधन र प्रर्बधनका आधारशिला हुन् र यही अनुपम सामुदायिक विश्वास र प्रयासले नै दिर्घकालिन संरक्षण सुनिश्चित गर्न सक्छ ।





WWF Nepal acknowledges with gratitude the support received for the Freshwater Program from all our partners, donors and supporters:
Government of Nepal; Ministry of Forests and Soil Conservation (MFSC); Department of National Parks and Wildlife Conservation (DNPWC); Department of Forests (DoF); Department of Plant Resources; Water and Energy Commission Secretariat (WECS); WWF International; WWF UK; WWF US; WWF Netherlands; WWF Finland; WWF Sweden; Swedish International Development Cooperation Agency (SIDA); International Water Management Institute (IWMI); and Community Based Organizations



२०२९ सालमा नेपालले राष्ट्रिय निकुन्ज तथा वन्यजन्तु संरक्षण ऐनको निर्माण गरेर वन्यजन्तु संरक्षणको आधुनिक युगमा प्रवेश गरेको थियो । राष्ट्रिय निकुन्ज तथा वन्यजन्तु संरक्षण विभागको ९ वटा राष्ट्रिय निकुन्ज, ३ वटा वन्यजन्तु आरक्ष, ३ वटा संरक्षण क्षेत्र र १ वटा शिकार आरक्ष लगायत ९ वटा मध्यवर्ती क्षेत्रको सञ्जाल रहेको छ । यी सबै गरेर नेपालको कूल भू-भागको १९.४ प्रतिशत अर्थात २८,५८५.६७ वर्ग कि.मि. क्षेत्रफल ओगटेको छ ।

राष्ट्रिय निकुन्ज तथा वन्यजन्तु संरक्षण विभागको प्रमुख उद्देश्यहरुमा नेपालका बहुमूल्य तथा विभिन्न वन्यजन्तु तथा वनस्पति तथा भू-दृश्यको संरक्षण, सुरक्षा एवं पुर्नोत्थान गर्नु रहेको छ ।

सन् १९८७ मा नेपाल रामसार महासन्धीको सदस्य राष्ट्र भएको थियो । राष्ट्रिय निकुन्ज तथा वन्यजन्तु संरक्षण विभाग यस महासन्धीको नेपाल कार्यान्वयन गर्ने प्रमुख निकायको रुपमा रहेको छ ।

डब्लु डब्लु एफ विश्वको ठूलो तथा अनुभवी स्वतन्त्र संरक्षणमूलक संस्था हो । लगभग ५० लाख सहयोगीहरु र ९० राष्ट्रमा फैलिएको सञ्जाल यसमा क्रियाशील रहेको छन् ।

डब्लु डब्लु एफ को लक्ष्य विश्वको प्राकृतिक वातावरणलाई ह्रास हुनबाट जोगाई तल उल्लिखित कार्यहरुमार्फत मानिस र प्रकृति बीच सामञ्जस्य रहने भविष्यको निर्माण गर्ने ध्येय राख्दछ :

- विश्वको प्राकृतिक विविधता जगेर्ना गरेर
- पुनः प्रयोजनमा आउने प्राकृतिक स्रोतको दिगोपनलाई सुनिश्चित गरेर
- प्रदुषण र अपव्ययी उपभोग न्यून गर्ने कुरा प्रवर्द्धन गरेर ।




**राष्ट्रिय निकुञ्ज तथा वन्यजन्तु संरक्षण विभाग**
पो.ब.नं. ८६०, बबरमहल, काठमाडौं, नेपाल
फोन: ९७७-१-४२२०८५०, ४२२०९१२, ४२२७९२६
फ्याक्स: ९७७-१-४२२६६७५
ई-मेल: dnpwc@bdcin.wlink.com.np
वेबसाइट: www.dnpwc.gov.np





**डब्लु डब्लु एफ नेपाल**
**स्वच्छ जलसम्पदा कार्यक्रम**
पो.ब.नं. ७६६०, बालुवाटार, काठमाडौं, नेपाल
फोन: ९७७-१-४४३४८२०, ४४३४९७०, ४४१०९४२
फ्याक्स: ९७७-१-४४३८४५८
ई-मेल: info@wwfnepal.org
वेबसाइट: www.wwfnepal.org
www.panda.org/freshwater